# भिक्षा माग्ने (निषेध) ऐन २०१८

लालमोहर र प्रकाशन मिति

२०१८।१२।२९

संशोधन गर्ने ऐन

१. नेपाल ऐनहरु संशोधन गर्ने, खारेज गर्ने र पुनः व्यवस्थित गरी चालू राख्ने ऐन, २०१९ २०१९।१२।३०

२. संक्षिप्त कार्यविधि ऐन, २०२८ २०२८।१२।२०

## २०१८ सालको ऐन नं. ४८

## भिक्षा माग्ने प्रथालाई निषेध गर्नको निमित्त बनेको ऐन

**प्रस्तावना** : [*]सर्वसाधारण जनताको सदाचार र नैतिकता कायम राख्न भिक्षा माग्ने प्रथालाई निषेध गर्नु वाञ्छनीय भएकोले,

श्री ५ महाराजाधिराज महेन्द्र वीर विक्रम शाहदेवबाट [*]नेपालको संविधानको धारा ९३ अनुसार यो ऐन बनाइबक्सेको छ ।

१. **संक्षिप्त नाम, विस्तार तथा प्रारम्भ** : (१) यस ऐनको नाम "भिक्षा माग्ने (निषेध) ऐन, २०१८" रहेकोछ ।

(२) यो ऐन नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी तोकिदिएको मितिदेखि तोकिएका इलाकामा लागू हुनेछ ।[†]

२. **परिभाषा** : विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस ऐनमा-

(क) "केटाकेटी" भन्नाले १६ वर्षको उमेर पूरा नगरेको व्यक्ति सम्झनु पर्छ ।

(ख) "कुनै केटाकेटीको सम्बन्धमा अभिभावक" भन्नाले सो केटाकेटीको हेर विचार गर्ने वा तत्काल जिम्मा लिने व्यक्तिलाई सम्झनुपर्छ र यस शब्दले ती केटाकेटी उपर नियन्त्रण राख्ने व्यक्ति समेतलाई जनाउँछ ।

(ग) "वयष्क" भन्नाले १६ वर्षको उमेर पुरा गरेको व्यक्ति सम्झनु पर्छ ।

३. **भिक्षा माग्ने प्रथामा प्रतिबन्ध** : (१) कुनै केटाकेटीको अभिभावकले कुनै सडक, गल्ली, घर वा अन्य कुनै ठाउँमा गीत गाउँने, नाच्ने, खेल्ने वा कुनै माल वस्तु बिक्री गर्ने निहुँ गरी वा नगरी ती

---

[*] नेपाल ऐनहरु संशोधन गर्ने, खारेज गर्ने र पुनः व्यवस्थित गरी चालू राख्ने ऐन, २०१९ द्वारा संशोधित ।

[†] मिति २०१९।५।११ को नेपाल राजपत्रमा प्रकाशित सूचना अनुसार मिति २०१९।६।१ देखि नेपालभरमा लागू हुने गरी तोकिएको ।

केटाकेटीलाई भिक्षा माग्न लगाएमा वा लिन लगाएमा वा भिक्षा माग्न वा लिन दुरुत्साहन दिएमा वा त्यस्तो भिक्षा दिलाउन प्रेरित गरेमा त्यस्तो अभिभावकलाई ★... ... ... कारवाई गरी जिल्ला न्यायाधीशका आदेशबाट बढीमा रु. ७५। सम्म जरिवाना वा तीन महीनासम्म कैद वा दुवै सजाय हुनेछ ।

(२) अभिभावक बाहेक अरु कुनै व्यक्तिले कुनै केटाकेटीलाई कुनै सडक, गल्ली र घर वा अन्य कुनै ठाउँमा भिक्षा माग्न लगाएमा वा लिन लगाएमा वा भिक्षा माग्न वा लिन दुरुत्साहन दिन लगाएमा त्यस्तो व्यक्तिलाई ★.......... कारवाही गरी जिल्ला न्यायाधीशका आदेशबाट बढीमा रु. ७५। सम्म जरिवाना वा तीन महीनासम्म कैद वा दुवै सजाय हुनेछ ।

(३) कुनै वयष्कले कुनै सडक, गल्ली, घर वा अन्य कुनै ठाउँमा भिक्षा मागेमा वा लिएमा आफूलाई भिक्षा दिन दुरुत्साहन गरेमा निजलाई ★.................कारवाही गरी जिल्ला न्यायाधीशका आदेशबाट बढीमा रु. ७५। सम्म जरिवाना वा तीन महीनासम्म कैद वा दुवै सजाय हुनेछ ।

४. **कसूरदारलाई पक्राउ गर्न र हिरासतमा राख्ने अधिकार** : (१) कुनै व्यक्तिले यो ऐन अन्तर्गत सजाय हुने कसूर गरेमा वा त्यस्तो कसूर गरेको छ भन्ने कुनै प्रहरी कर्मचारीलाई शंका लागेमा सो व्यक्तिको नाम र बसोबासको ठाउँ निज प्रहरी कर्मचारीलाई थाहा नभएको वा यही नाम वा ठाउँको हो भनी निजले यकीन गर्न नसकेकोमा त्यस्तो व्यक्तिलाई निज प्रहरी कर्मचारीले बिना वारेण्ट गिरफ्तार गर्न सक्नेछ र त्यस्तो गिरफ्तार गरिएको व्यक्तिलाई बाटोको म्याद बाहेक २४ घण्टा भित्र कानूनी कारवाईको निमित्त अदालतमा बुझाई दिनुपर्छ ।

(२) कसैले कुनै व्यक्तिलाई यो ऐन अन्तर्गत सजाय हुने कसूर गरिरहेको फेला पारेमा निजलाई त्यस्तो व्यक्तिले बिना वारेण्ट पक्राउ गरी नजिकमा प्रहरी ठाना भए प्रहरी ठानामा र प्रहरी ठाना नभए प्रहरी चौकीमा बुझाई दिन सक्नेछ र सम्बन्धित प्रहरी ठाना वा चौकीका अधिकृत ईन्चार्जले तुरुन्त बुझी लिई निजलाई उपदफा (१) बमोजिम कानूनी कारवाईको निमित्त अदालतमा बुझाई दिनुपर्छ ।

५. **जमानत लिई वा नलिई छाड्न सकिने** : दफा ४ को उपदफा (१) बमोजिम पक्राउ भएको वा सोही दफाको उपदफा (२) बमोजिम पक्राउ गरी बुझाउन ल्याएको कुनै व्यक्तिलाई सम्बन्धित चौकी वा ठानाका अधिकृत इन्चार्जले वा सो भन्दा माथिल्लो दर्जाको प्रहरी अधिकृतले पक्राउ

★ संक्षिप्त कार्यविधि ऐन, २०२८ द्वारा खारेज ।

भएको व्यक्तिलाई बोलाएको बखत बोलाएको ठाउँ र समयमा हाजिर हुन आउने गरी जमानत लिई वा नलिई कागज गराई छाड्न सक्नेछ ।

६. **मुद्दा नेपाल सरकार वादी भई हेरिने** : यस ऐन अन्तर्गतको अपराध सम्बन्धी मुद्दा नेपाल सरकार वादी भई हेरिनेछ ।

७. **हदम्याद** : यो ऐन अन्तर्गत सजाय हुने कसूरको अभियोगमा कसूर गरेको १ महीनाभित्र मुद्दा दायर नभै अदालतले त्यस्तो मुद्दा सुन्न र कारवाई गर्न हुँदैन ।

८. **झुट्टा उजुर गर्नेलाई सजाय** : यस ऐन अन्तर्गतको अपराध सम्बन्धी मुद्दामा कसैले झुट्टा पोल उजुर गरी अदालतमा साबित गर्न नसकेमा निजलाई रु. ४०। चालीस सम्म जरिवाना वा डेढ महीनासम्म कैद वा दुबै सजाय हुनेछ ।

९. **नियम बनाउने अधिकार** : यो ऐनको उद्देश्य कार्यान्वित गर्न नेपाल सरकारले नियम बनाउन सक्नेछ ।

१०. **यो ऐन लागू नहुने** : माथि दफा दफाहरुमा जुनसुकै कुरा लेखिएको भए तापनि धार्मिक रीति थिति वा धार्मिक परम्परा अनुसार कुनै व्यक्तिले चाड वा पर्वमा वा कुनै किसिमको धार्मिक कर्मकाण्ड गर्दा भिक्षा माग्नु पर्ने भएमा त्यसरी मागिएको भिक्षामा यो ऐनको कुनै कुरा लागू हुनेछैन ।

११. [५<] .... .... ..... ...... ..... ..... .....

---

[५<] नेपाल ऐनहरु संशोधन गर्ने, खारेज गर्ने र पुनः व्यवस्थित गरी चालू राख्ने ऐन, २०१९ द्वारा झिकिएको ।

**द्रष्टव्य** :

१. नेपाल कानून (संशोधन) ऐन, २०२४ द्वारा रुपान्तर गरिएका शब्दहरु:-

(क) "पुलिस" को सट्टा "प्रहरी"

(ख) "अफिसर" को सट्टा "अधिकृत"

(ग) "गजेट" को सट्टा "राजपत्र"

२. न्याय प्रशासन (विविध व्यवस्था) ऐन,२०२१ द्वारा "इलाका न्यायाधीश" को सट्टा "जिल्ला न्यायाधीश" भन्ने रुपान्तर गरिएको ।

३. केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६३ बमोजिम रूपान्तर भएका शब्दहरू:-

"श्री ५ को सरकार" भन्ने शब्दको सट्टा "नेपाल सरकार" ।